# म नाटक हेर्छु

नाटक
एक बोली एक दाम
परिकल्पनाकार/निर्देशक : प्रवीण खतिवडा






/ngtheatregroup
/ngsamuha
ngsamuha@gmail.com
+977-9851147149




मण्डला थिएटरसँगको सहकार्यमा ङ समुहको प्रस्तुती






नाटक
# एक बोली एक दाम

मिति : फाल्गुण ५ गतेदेखि २२ गतेसम्म (सोमबार बाहेक हरेक दिन)
समय : साँझ ५:१५ बजे (शनिबार दिउँसो १ बजे पनि)
स्थान : मण्डला नाटकघर, अनामनगर (सिंहदरवार पुर्वी गेट अगाडि)
सम्पर्क : ९८४१०५८३९०, ०१-४२४९७६१

मञ्च भित्र : जीवन भट्टराई, सुदाम सिके, शक्ति राई र संगीत सापकोटा
मञ्च भित्र / बाहिर : आधा सुर र दीपक श्रेष्ठ
निर्माता : गोविन्द पराजुली, नाटककार : सिजन दाहाल, परिकल्पनाकार/निर्देशक : प्रवीण खतिवडा

हाम्रा सहयोगीहरु :






## ङ समुहको बारेमा

कलाको सबै विधालाई माया गर्ने कला पारखीहरुको समुह हो 'ङ' । हामी तपाईंहरु जस्तै दर्शकहरुको एउटा सानो जमात हौं । जमात शक्ति हो र कला पनि । कलाको कुनै पनि माध्यममा शक्ति हुन्छ । यहि शक्तिलाई हामी शक्तिशाली रुपमा यहाँहरु समक्ष प्रस्तुत गर्न जुटिरहेका छौं । यसै अनुसार विगतमा जस्तै हामी यसपाली पनि रंगमञ्चको माध्यमबाट आइपुगेका छौं । भविष्यमा पनि यसरी नै कुनै कलाकै माध्यमद्वारा हजुरहरु समक्ष जोडिने छौं । समाजसँग जोडिने छौं । साथै हामी यस क्षेत्रको व्यवसायिकरण गर्न पनि प्रयासरत रहने छौं ।

भर्खरै स्थापित यस समुहले पहिलो पहल स्वरुप bringing library into theatre अभियान थालेको छ । यसअन्तर्गत हामीले शंकर लामिछानेको कथा संग्रह "गौथलीको गुँड"बाट एउटा कथा लिएर त्यसलाई नाटकको रुपमा प्रस्तुत गरिसकेका छौं । हामी अहिले हाम्रै आफ्नै दन्त्यकथालाई रंगमञ्चमा उतार्दै छौं । दन्त्यकथाहरु पनि हाम्रै पुर्ख्यौली पुस्तकालय हुन् भन्छौं हामी ।

हामी सदैव यहाँहरुको माया, साथ, सहयोग, सल्लाह तथा सुझावको अपेक्षा गर्दछौं ।

## निर्माताको भनाई

रंगमञ्चलाई व्यवसायिक बनाउनु अहिलेको आवश्यकता हो । नाटक "ऊ कस्को ?" निर्माण पछिको उत्साह, उमंग र उर्जा बटुलेर फेरि दोस्रो नाटक निर्माण गर्ने जमर्को गरेको छु । अग्रजहरुको आशिर्वाद र साथीभाईहरुको साथ सहयोग प्रति अत्यन्तै आभारी छु । 'ङ' समुह, मण्डला थिएटर नेपाल, निर्देशक प्रवीण खतिवडा 'एक बोली एक दाम' टिम अनि सम्पूर्ण शुभचिन्तकहरु प्रति साधुवाद ।
Spread love, save the universe.

गोविन्द पराजुली

## मण्डलावाणी

नाटकघर भावनाहरु साट्ने साझा चौतारी हो । यहाँ कहिले विरहका भाका गुञ्जिन्छन् त कहिले रुमानी रंगका स्वर छचल्किन्छन् । पर परदेशवाट पाहुना बनेर आएका कथा या हाम्रै लोक भाकाका व्यथा हुन्, रंगमञ्चको चौतारीमा सबै आफ्ना लाग्छन् । यो पटक मण्डलामा 'ङ' समुहले लोककथालाई समातेर नाटक 'एक बोली एक दाम' प्रस्तुत गर्दैछन् । यो नाटक स्वादिलो बन्ने कुरामा म विश्वस्त छु ।

राजन खतिवडा

## हार्दिक आभार

राजन खतिवडा, सोमनाथ खनाल, उमेश तामाङ, जुलिया स्यारिङ्गर, सरस्वती चौधरी, पवन आचार्य, नवराज पराजुली, सुनीलकुमार थापा, विक्रम सिं थारु, नवीन प्राचीन, ज्योती भट्टराई, देव न्यौपाने, पराजुली मामा, कुशल तिमल्सिना, आकांक्षा कार्की, सुनील तिमल्सिना र पवन झा ।

## लेखकीय

एकादेशमा आँखा नदेख्नेहरुले "हात्ती कस्तो हुन्छ ?" भनेर जान्न चाहेछन् र हात्तीलाई सुम्सुम्याएछन् । कसैले हात्ती डोरी जस्तो छ भनेछन्, कसैले खम्बा जस्तो, कसैले भित्ता जस्तो त कसैले नाङ्लो जस्तो । उनीहरुले आफुले महसुस गरेको हात्तीको बारेमा गतिला–गतिला तर्क राखे तर अरुको तर्क सुनेनन् । यहि कारणले उनीहरु कसैले पनि हात्ती कस्तो हुन्छ भन्ने बुझ्न सकेनन् । मान्छेले आफ्नो देखाई वा भोगाई अनुसार नै धारणा बनाउँछ र बोल्छ ।

यस नाटकको बारेमा म के बोलौं र ? मैले खम्बा जस्तो भनौंला तपाईले नाटक हेरेर डोरी जस्तो भन्नुहोला । त्यसैले म एउटाले नाटकको बारेमा किन बोल्ने ? अरुलाई बुझाउन पो बोल्ने कि ? अरुलाई सुनाउन पो बोल्ने ? कि आफुले जाने बुझेको कुरा बोल्ने त ? बोलेर मात्रै पनि नहोला । यहाँ सुनिदिने को छ र ?

सुन्नेलाई सुनको माला, भन्नेलाई फूलको माला ।

जसले सुन्यो उसले जित्यो । यस नाटकको मुख्य पात्रले पनि सुनेरै सुन पाएको छ । बोल्नेहरु र भन्नेहरुको भागमा त सधैं फूल नै हुन्छ । मलाई बोल्न मन लागेको कुरा नाटक लेखेरै बोलें । निर्देशक भन्छन्, "बोल्नेहरुले कहिल्यै केहि पाएनन् । अब बोल्नु परेमा एक चोटी बोलेको एक रुपैयाँ लिनुपर्छ ।"

**सिजन दाहाल**

## निर्देशकीय

यो शहरमा सबै थोकको भाउ बढ्यो,
मेरो मात्र बढेन ।
निःशुल्क चिया पिउन पाइने भो,
गएँ ।
फेरि नाटक गर्न प्रस्ताव गर्छ 'ङ' समुह !
''त्यत्रो पैसा डुबाएर पनि पुगेन ?'' मेरो प्रतिक्रिया
''बरु बोलेकै पैसा लिनुस्'', उही भन्छ ।
''उल्टै तिर्नु छ, कसरी लिनु ?''
धन्य बाजे, तपाईंको दन्तेकथा !!
"गम्भिर र लेख्य नै किन चाहियो ?" मेरो मान्यता ।
परिकथाहरुमा पुर्णता देख्छु म । मलाइ लाग्यो, यस्ता कथाहरु सुनिनु मात्र हुँदैन, देखिनु पर्छ । कुनै नयाँ तरिकाले लेखिनु पर्छ ।
तपाईंहरुले एकादेशको दन्तेकथा हेर्नु भो । अरुलाई पनि हेर्न भनिदिनुस् ।
''अब देखि एक चोटी बोलेको एक रुपैयाँ ।''
बोली बिकेछ भनें फेरि भेटौंला ॥

**प्रवीण खतिवडा**

## नेपथ्यमा

**मञ्च निर्माणः** हुम बिसी
**मञ्च सामग्रीः** शक्ति राई र जीवन भट्टराई
**प्रकाशः** दिपल बराल (नरेन्द्र)
**संगीतः** आधा सुर र दीपक श्रेष्ठ
**पोष्टर र ब्रोसरः** मिलन डी काप्री
**सुचना तथा टिकटः** सपनाकुमारी चौधरी
**स्वागत सत्कारः** मह मौरी फाउन्डेशन
**निर्माताः** गोविन्द पराजुली
**नाटककारः** सिजन दाहाल
**परिकल्पनाकार तथा निर्देशकः** प्रवीण खतिवडा

## रंगमञ्चमा आगामी रंग

नाटक
सान VS अति
लेखन, परिकल्पना तथा निर्देशन
केदार श्रेष्ठ
फागुन १३ देखि ३० सम्म
थिएटर मल नाटकघर, सुन्धारा, काठमाडौं मलमा

सर्वनाम थिएटर, कालिकास्थान
फागुन ६ देखि चैत्र ५ गते सम्म
बुख्याचा मन
लेखन तथा निर्देशन
राज शाह

नयनराज पाण्डेको "लू" उपन्यासमा आधारित नाटक
"लू"
परिकल्पना / नाट्य रुपान्तरण / निर्देशन
सरिता साह
फाल्गुन २७ देखि चैत्र २० सम्म (सोमबार बाहेक)
स्थानः मण्डला थियटर, अनामनगर, सिंहदरबार पुर्वी गेट

भृकुटी
लेखक : सरुभक्त
निर्देशक : पवित्रा खड्का
स्थान : शिल्पी थिएटर, बत्तीसपुतली